# साम–उःप्मा मुन्धुम




## आत्मा, उपचार र उपनिवेशविरोधी चिन्तनको एक आदिवासी दर्शन

डा. नवराज सुब्बा

# प्रतिलिपि अधिकार

**साम उःप्मा मुन्धुमः आत्मा, उपचार र उपनिवेशविरोधी चिन्तनको एक आदिवासी दर्शन**

लेखकः **डा. नवराज सुब्बा**



संस्करणः प्रथम (२०८२)
**ISBN: 9789937-9810-8-8**
प्रकाशकः हाम्रो आइडिया, विराटनगर, नेपाल।
आवरण फोटो साभार-, क्याम्भा डटकम

# प्रस्तावना

प्रस्तुत *साम-उ:प्मा मुन्धुम* नेपालका किरात लिम्बू समुदायको सांस्कृतिक र आध्यात्मिक परम्परामा जरा गाडिएको मौलिक आदिवासी ज्ञान र उपचारको ढाँचा हो। यो एक समग्र, अनुभवजन्य र दार्शनिक प्रणाली हो, जसको केन्द्रमा आत्मा (*साम),* आत्मा/सातो बोलाउने अनुष्ठान (*उ:प्मा),* र मौखिक ज्ञान (*मुन्धुम)* को पारस्परिक सम्बन्ध अवस्थित छ। शताब्दीयौँदेखि जीवित अनुभव, अनुष्ठान, मन्त्रपाठ र पुस्तान्तरणमार्फत विकास भएको यो दर्शन केवल सांस्कृतिक आख्यान होइन; यो अस्तित्व, चेतना, पीडा र उपचार बुझ्ने एक समग्र प्रणाली हो।

यो पुस्तक लेखनको प्रेरणा एक गहिरो आवश्यकताबाट भएको हो।  परम्परागत ज्ञान, विश्वास र विचारलाई जोगाउने, स्पष्ट गर्ने र बाँड्ने नै यो लेखाइको उद्देश्य हो।  किनभने यो अभ्यास वा ज्ञान मानसिक स्वास्थ्यको क्षेत्रमा विश्वमा कमै चर्चा हुन्छ। त्यसैले मैले यस विषयलाई लेखमार्फत उजागर गर्न खोजेको हुँ। जनस्वास्थ्य, मानसिक स्वास्थ्य, साहित्य र संस्कृतिका क्षेत्रमा काम गर्दा लेखकले देखेँ—पश्चिमी मनोचिकित्सा प्रणालीले आदिवासी समुदायमा देखिने भावनात्मक र आध्यात्मिक मनोसंकटहरू, विशेषतः 'सातो हराउने' र 'सातो बोलाउने' अवस्थालाई न त बुझ्न सक्छ न सम्बोधन गर्न। यही मौनताको खाली ठाउँबाट यस दर्शनको रूपरेखा सिर्जना गरिएको हो।

*साम-उ:प्मा मुन्धुम दर्शन* को मान्यता अनुसार मानिस शरीर, आत्मा र सम्बन्धहरूको एक अविभाज्य त्रिकोण हो। जब कुनै कारण—जस्तै आघात, भय, आध्यात्मिक अवरोध वा सामाजिक आघातका कारण—आत्मा (*साम)* हराउँछ, व्यक्ति मानसिक र आध्यात्मिक असन्तुलनको शिकार हुन्छ। उपचार त्यसपछि केवल औषधि वा परामर्श होइन; बरु आत्मा, व्यक्ति, समुदाय र ब्रह्माण्डबीच

पुनः सम्बन्ध स्थापना गर्नु आवश्यक हुन्छ। यही कार्य *उ:प्मा*—सातो बोलाउने अनुष्ठान—मार्फत् सम्पन्न हुन्छ। यी अनुष्ठानहरू केवल सांस्कृतिक अभ्यास होइनन्; तिनीहरू आध्यात्मिक उपचार प्रविधिहरू हुन्, जो ब्रह्माण्डशास्त्र र जीवित दर्शनमा गहिरो रूपमा निहित छन्।

मौखिक ज्ञानको भण्डार *मुन्धुम* नै  यस दर्शनको आधारस्तम्भ हो। यही मुन्धुममार्फत पूर्वजहरूको ज्ञान मन्त्र, कथा, मिथक र अनुष्ठानिक आख्यानमार्फत हस्तान्तरण हुन्छ। मुन्धुम नै सांस्कृतिक स्मृति, नैतिक शिक्षा र उपचार अभ्यासहरूको जीवित भण्डार हो। यो पुस्तकले मुन्धुमलाई केवल परम्परा होइन, एक यस्ता ज्ञान प्रणालीका रूपमा प्रस्तुत गर्छ जुन वैज्ञानिक र दार्शनिक ज्ञानका प्रमुख मान्यताहरूलाई चुनौती दिन सक्षम छ।

पुस्तकका अध्यायहरूमा *साम-उ:प्मा* विश्वदृष्टिकोणलाई एक शैक्षिक संरचनामा व्यवस्थित गर्ने प्रयास गरिएको छ। यसको मौलिकताको सम्मान गर्दै र वैश्विक पाठकका लागि बुझ्न सकिने ढाँचामा दर्शनलाई ब्याख्या र प्रस्तुत गरिएको छ। पुस्तकको प्रारम्भ किरात जातिको ऐतिहासिक र सांस्कृतिक पृष्ठभूमिको अवलोकनबाट हुन्छ, विशेषतः लिम्बू समुदाय सन्दर्भमा, र मुन्धुम कसरी सांस्कृतिक, दार्शनिक र उपचारात्मक मार्गनिर्देशकको रूपमा कार्य गर्छ भन्ने विश्लेषण प्रस्तुत गरिएको छ।

मुख्य अध्यायहरूमा *साम*, *उ:प्मा*, र *मुन्धुम* को प्रतीकात्मक र उपचारात्मक भूमिकाहरूको अन्वेषण गरिएको छ, जसले कसरी यी अवधारणाहरू एक आपसमा  गाँसिएर सिङ्गो जीवन दृष्टिकोण निर्माण गर्छन् भन्ने देखाउँछ। शरीर र आत्माबीचको संवादसम्बन्धी एउटा छुट्टै अध्याय पनि समावेश गरिएको छ—यो दृष्टिकोण आधुनिक मनोविज्ञानमा अक्सर अनुपस्थित भए तापनि किरात दर्शनमा गहिरो रूपमा जरा गाडिएको अवस्थामा छ। यहाँ शरीरलाई केवल आत्माको वासस्थान नभई संवाद गर्ने साझेदारको रूपमा हेर्ने गरिन्छ, जसको

पीडाले प्रायः आत्मिक असन्तुलनको सङ्केत र निवारणको अवसर निर्माण गरिदिन्छ।

पुस्तकको एक मुख्य योगदान *साम-उ:प्मा* सिद्धान्त र आधुनिक मनोवैज्ञानिक ढाँचाहरूबीचको तुलनात्मक विश्लेषण हो। केस अध्ययनहरूद्वारा आत्मा हराउने अनुभव र डिसोसिएटिभ डिसअर्डर, ट्रमा प्रतिक्रिया, र शोक अवस्थाजस्ता क्लिनिकल अवस्थाहरूबीच समानता देखाइएको छ। यी तुलनाहरू आदिवासी ज्ञानलाई पश्चिमेली वर्गीकरणमा गाभ्नलाई नभएर; बरु उपचार र व्याख्याको उपनिवेशविरोधी दृष्टिकोण प्रस्तुत गर्नका लागि गरिएको हो।

अर्को पक्षमा, पुस्तकले *साम-उ:प्मा* सिद्धान्तमा आधारित एक उपचार मोडेलको रूपरेखा पनि प्रस्तुत गर्छ। यसमा सांस्कृतिक सन्दर्भमा आधारित मूल्याङ्कन, अनुष्ठानिक उपचार, कथा पुनर्संरचना र सामुदायिक सहभागिता समावेश छन्। मोडेल समग्रमा, सहभागीतामूलक, सांस्कृतिक तथा आध्यात्मिक छ—लक्षण दबाउने भन्दा सन्तुलन पुनःस्थापनामा केन्द्रित छ। यसले जैविक चिकित्सा मोडेलको सीमालाई चुनौती दिन्छ र सम्बन्धपरक नैतिकता, पारिस्थितिक चेतना र आध्यात्मिक एकीकरणमा जोड दिन्छ।

पुस्तकको अन्त्यतिर, दर्शनको समग्र समायोजन तथा विश्लेषण प्रस्तुत गरिएको छ। *साम-उ:प्मा मुन्धुम दर्शन* केवल आदिवासी ज्ञानको योगदान होइन; यो एक यस्तो सन्देश हो, जुन विश्वव्यापी मानसिक स्वास्थ्य संकट, आध्यात्मिक विच्छेदन र सांस्कृतिक विखण्डनको सन्दर्भमा अत्यन्त सान्दर्भिक छ। यसले हेरचाह, समग्रता र जीवनको अर्थ पुनः परिभाषित गर्नका लागि एक आदिवासी दृष्टिकोण प्रदान गर्छ। यसले यो विश्वास दिलाउँछ कि सत्य केवल तथ्यमा होइन, तर सम्बन्ध, कथा, अनुष्ठान र अनुभवमा पनि पाइन्छ।

यो पुस्तक लेख्नु लेखकको व्यक्तिगत, आध्यात्मिक र शैक्षिक यात्राको परिणाम हो।  यो कृति सांस्कृतिक संरक्षण, दार्शनिक नवप्रस्तावना र बौद्धिक उपनिवेशविरोधको एउटा महत्वपूर्ण प्रयास हो। लेखकको विश्वास छ कि यस कामले किरात लिम्बू समुदाय मात्र होइन, समग्र मानव समुदाय, विद्वान्, चिकित्सक र आध्यात्मिक खोजमा रहेका पाठकहरूलाई पनि समग्र, अर्थपूर्ण र सम्बन्धपरक जीवन दृष्टिकोण खोज्न सहयोग पुऱ्याउनेछ।

लेखक डा. सुब्बाले यो पुस्तक लिम्बू समुदायका ती सबै बौद्धिक तथा आध्यात्मिक स्रष्टा, उपचारक, कथावाचक र पूर्वजहरूलाई समर्पित गर्नुभएको छ, जसले मुन्धुम परम्परालाई जीवित राख्न महत्वपूर्ण योगदान दिनुभयो।  उहाँले ती शिक्षक, समुदाय र पाठकप्रति आभार व्यक्त गर्नुभएको छ, जसले आत्माको मौन स्वरलाई सुन्ने आँट र संवेदना देखाएका छन्।

# लेखकीय टिप्पणी

यस कृतिको लेखन मेरो व्यक्तिगत खोज, सांस्कृतिक चिन्तन, र पेशागत यात्राको सङ्गम हो। मैले जनस्वास्थ्य, साहित्य, मनोविज्ञान, संस्कृति र मानवशास्त्रका क्षेत्रमा लामो समय काम गर्दा आत्मा, मानसिक स्वास्थ्य, साहित्य एवम् संस्कृतिको गहिरो सम्बन्धलाई बारम्बार अनुभव गरेँ। मानिसको दुःख केवल मस्तिष्कको समस्या होइन—त्यो उसको अस्तित्व, विश्वास, स्मृति, र सम्बन्धहरूसँगको विच्छेद हो। यही अनुभूतिले मेरो चेतनामा *साम-उ:प्मा मुन्धुम* दर्शनको बीउ रोपेको हो।

किरात लिम्बू समुदायको मुन्धुम, जसमा म जीवनभरिको आत्मीयता र प्रेरणा पाउँछु, केवल पुरातन धार्मिक अथवा सांस्कृतिक दस्तावेज होइन—त्यो एक गहिरो दार्शनिक र उपचारात्मक प्रणाली हो। तर दुःखको कुरा, यस्तो मौलिक दर्शन अझै पनि शैक्षिक, चिकित्सकीय र वैश्विक बहसको केन्द्रमा आउन सकेको छैन। यही कारणले मैले यो दर्शनलाई दस्तावेजीकरण गर्ने, संरचना दिने, र अन्तर्राष्ट्रिय बौद्धिक मञ्चमा प्रस्तुत गर्ने साहसिक प्रयास गरेको हुँ।

साम (आत्मा), उ:प्मा (सातो बोलाउने), र मुन्धुम (मौखिक दर्शन/ज्ञान)—यी अवधारणाहरूले मानिसको मानसिक, शारीरिक र आध्यात्मिक पक्षबीचको सम्बन्धको सन्तुलनमा आधारित उपचार पद्धतिमा गहिरो योगदान दिन सक्छन् भन्ने कुरा मैले विभिन्न अनुभव, अनुष्ठान, अन्तर्वार्ता र अध्ययनमा पाएँ। यी विचारहरू केवल परम्परागत दर्शनको अंश मात्र होइनन्, तिनीहरू आधुनिक मानसिक स्वास्थ्य प्रणालीका पूरक र सुधारक बन्न सक्छन्।

लेखकका रूपमा मैले एकैपटक अन्वेषक, प्रेक्षक, सहभागी र चिन्तकको भूमिकाका रूपमा यो यात्रा गरेँ। मैले सीमित अनुसन्धानात्मक ढाँचामा अडिन चाहिनँ; किनभने साम-उःप्मा दर्शन स्वयम् सीमाभन्दा परको, अनुशासनहरूमाझ सञ्जाल बुनिरहेको ज्ञान प्रणाली हो। यो मानव चेतना, संस्कृति, उपचार, र सम्बन्धको पुनःसम्झना हो।

लेखनको क्रममा मैले सांस्कृतिक भावनाहरू, वैज्ञानिक तर्क, र दार्शनिक स्पष्टतालाई एउटै धारामा समेट्नुपर्ने चुनौति सामना गरेँ। तर म विश्वस्त छु—जब दर्शन हृदयबाट आउँछ, त्यो केवल सैद्धान्तिक रहँदैन; त्यो अनुभूतिजन्य, उपचारात्मक र जीवन्त हुन्छ। यही जीवन्तताको रूप हो “साम-उःप्मा मुन्धुम” दर्शन।

म यस कृतिलाई आधुनिक मानसिक स्वास्थ्य उपचारमा उपनिवेशकालीन एकाधिकारको चुनौती दिने, बहु-सांस्कृतिक ज्ञानको स्वीकार्यता बढाउने, र स्थानीय उपचार परम्पराको पुनःस्थापना गर्ने साधनका रूपमा अघि सार्दछु। यदि यो दर्शनले एक जनालाई पनि आत्मासँग पुनःसम्बन्ध स्थापित गर्न सघायो भने, मेरो प्रयास सार्थक हुने छ।

म यो पनि स्वीकार्छु कि साम-उःप्मा दर्शन कुनै एक निश्चित धर्म, जाति वा भूगोलको मात्रै सम्पत्ति होइन। यो दर्शन विश्व मानवताको साझा चिन्तन हो, जुन संवाद, सम्बन्धले शान्तिको बाटो देखाउँछ। यो हामीलाई स्मरण गराउँछ—हामी केवल विचार वा शरीर मात्र होइनौं; हामी आत्मा हौं—जुन संसार, समाज र ब्रह्माण्डसँग जोडिएको हुन्छ।

पुस्तकको लेखन प्रक्रियामा मैले किरात लिम्बू संस्कृतिका फेदाङ्बा/मा, साम्बा, येबा/येमा र सन्देशवाहकहरूबाट पाएको मौन ज्ञानलाई लेखमार्फत अभिव्यक्त गर्ने जिम्मेवारी बोध गरेँ। मैले तिनीहरूको कथा, आवाज र दर्शनलाई शास्त्रीय र विश्वसनीय बनाउँदै

प्रस्तुत गर्ने जमर्को गरेको छु। यो पुस्तक त्यही मौन ज्ञानको लेखबद्ध आवाज हो।

म यो पुस्तकलाई किरात लिम्बू समुदायका सबै ज्ञानवाहकहरू, अनुसन्धानकर्ता साथीहरू, शैक्षिक पाठकवर्ग, र अन्तरनिहित आत्माको खोजमा रहेका सम्पूर्ण मानिसहरूलाई समर्पण गर्दछु।

यस कृतिलाई पढ्दै गर्दा, पाठकहरूले आफूभित्रको चुपचाप बोल्ने आत्मासँग संवाद गर्न सकून्, अनि आफ्नै संस्कृतिमा निहित उपचार र दर्शनको शक्ति पहिचान गर्न सकून् भन्ने मेरो हार्दिक कामना छ।

डा. नवराज सुब्बा

लेखक

# विषय-सूची

# अध्याय १: परिचय

**साम-उ:प्मा मुन्धुम दर्शनको पृष्ठभूमि—**

## १.१ आत्मा, ज्ञान र मानसिक समभाव

साम-उ:प्मा मुन्धुम दर्शन पूर्वी नेपालका किरात लिम्बू समुदायको मौलिक जीवनअनुभव र मौखिक परम्परामा आधारित आदिवासी दार्शनिक दृष्टिकोण हो। यस दर्शनको केन्द्रीय आधार हुन्: *साम* (आत्मा), *उ:प्मा* (आत्मा बोलाउने क्रिया वा अनुष्ठान), र *मुन्धुम* (मौखिक ज्ञान र दर्शन)। यी सबै मिलेर स्वास्थ्य, व्यक्तित्व र उपचारप्रतिको सांस्कृतिक सन्दर्भमा आधारित दृष्टिकोण प्रदान गर्छन्, जुन पश्चिमेली जैविक र मनोवैज्ञानिक दृष्टिकोणबाट धेरै भिन्न छन् (Chemjong, 2003; Sagant, 1996)।

यस विश्वदृष्टिकोणमा मानसिक र भावनात्मक अशान्तिलाई आत्माको बिछोड वा आन्तरिक तत्वसँगको टुटफुटको परिणामको रूपमा बुझिन्छ। *उ:प्मा* अनुष्ठान एउटा सामुदायिक र आध्यात्मिक अभ्यास हो जसबाट हराएको आत्मालाई पुनः एकीकृत गरिन्छ र सन्तुलन पुनःस्थापित हुन्छ। यस अध्यायको उद्देश्य साम-उ:प्मा दर्शनलाई शैक्षिक, संरचित रूपमा प्रस्तुत गर्नु र मानसिक स्वास्थ्य, आदिवासी ज्ञानपद्धति, र उपनिवेशविरोधी विचारसँग यसको सम्बन्ध उजागर गर्नु हो (Smith, 2012; Kovach, 2009)।

## १.२ मूल अवधारणाहरू

*साम* भन्नाले चेतनाको स्रोत, जीवनशक्ति वा आत्मालाई जनाउँछ, जसले व्यक्तिको आध्यात्मिक पहिचान निर्माण गर्छ। लिम्बूहरूको अस्तित्वशास्त्रअनुसार स्वास्थ्यको आधार आत्माको उपस्थिति र

सम्पूर्णतामा निर्भर हुन्छ। यदि आत्मा विचलित भयो भने व्यक्तिले भावनात्मक, मानसिक वा शारीरिक रूपमा पीडा भोग्न सक्छन् (Gone, 2013)। पश्चिमेली दृष्टिकोणअनुसार मन-शरीर द्वैतीयता वा अलग अलग अस्तित्व मान्दछ तर किरात लिम्बू मुन्धुममा साम शब्दले भावना र आत्मालाई एकीकृत रूपमा हेर्दछ।

### १.२.१ उ:प्मा (आत्मा बोलाउने प्रक्रिया)

*उ:प्मा* एक पवित्र अनुष्ठान हो जसद्वारा व्यक्तिको आत्मासँग पुनः सम्पर्क स्थापित गरिन्छ। यसमा मन्त्र, सङ्गीत, प्रार्थना, र प्रतीकात्मक रूपले आत्मालाई आफ्नै स्थानमा फर्काउने कार्य हुन्छ। यो अनुष्ठान साम्बा वा फेदाङ्बा/मा वा येबा/युमा जस्ता अनुभवी शामनहरूद्वारा गरिन्छ, जसले सम्बन्धहरू, पूर्वजहरू, र प्रकृतिसँग आत्माको सन्तुलन पुनःस्थापित गर्न सघाउँछ (Sagant, 1996)।

### १.२.२ मुन्धुम (मौखिक ज्ञान/दर्शन)

*मुन्धुम* किरात लिम्बूहरूको मौखिक दर्शनको आधार हो, जसमा पुराण, अनुष्ठान, नैतिक नियम, ब्रह्माण्डशास्त्र र इतिहास समावेश छन्। यसलाई पुस्तौँदेखि मौखिक रूपमा हस्तान्तरण गरिन्छ र यसले सांस्कृतिक सन्दर्भ मात्र होइन, आध्यात्मिक र उपचारात्मक मार्गनिर्देशन पनि प्रदान गर्छ (Kovach, 2009)।

## १.३ दार्शनिक संरचना

### १.३.१ मानव अस्तित्व र आत्माको भूमिका

साम-उ:प्मा दर्शन अनुसार मानिस प्रकृति, समुदाय र आध्यात्मिक जगतसँग अन्तरसम्बन्धित हुन्छ। आत्मा (साम) छुट्टै अस्तित्व होइन, तर सम्बन्धहरूको जालभित्रको अङ्ग हो। रोगलाई रासायनिक असन्तुलन वा मानसिक रोग होइन, सम्बन्धको विघटनको रूपमा बुझिन्छ (Kirmayer et al., 2014)।

### १.३.२ आत्माको बिछोड र मानसिक असन्तुलन

जब आत्मा हराउँछ—अक्सर पीडा, शोक वा आध्यात्मिक उपेक्षाका कारण—व्यक्तिमा अवसाद, चिन्ता वा एक्लोपन जस्ता लक्षणहरू देखा पर्न सक्छन्। यी लक्षणहरू केवल मानसिक रोग होइनन्, तर आध्यात्मिक विच्छेदन हुन्। *उ:प्मा* अनुष्ठान यस अवस्थामा सन्तुलन पुनःस्थापना गर्ने उपचार हो (Gone, 2013)।

### ३.३ उ:प्मा: उपचारको प्रक्रिया

पश्चिमेली मनोरोग जस्तै क्लिनिकल र निष्क्रिय विधिको विपरीत, *उ:प्मा* अनुष्ठान सहभागितामूलक हुन्छ जहाँ सांकेतिक रूपमा सामुदाय केन्द्रित अनुष्ठान गरिन्छ। यसले व्यक्ति र ब्रह्माण्डबीचको सम्बन्धलाई पुनः बुन्छ। यसले कथा, अनुष्ठान र सामाजिक पुनःएकीकरणमार्फत् उपचार प्राप्त हुने दृष्टिकोणको प्रतिनिधित्व गर्छ (Watkins & Shulman, 2008)।

## १.४ समसामयिक सान्दर्भिकता

- **मानसिक स्वास्थ्यको उपनिवेशविरोधी दृष्टिकोण:** साम-उ:प्मा मोडेलले पश्चिमेली सार्वभौमिकतालाई चुनौती दिंदै स्थानीय, आध्यात्मिक दृष्टिकोण अघि सार्छ (Smith, 2012)।

- **सामुदायिक आधारमा उपचार:** यो व्यक्तिवादी उपचारबाट सामुदायिक उपचार प्रणालीमा केन्द्रित हुन्छ (Kirmayer et al., 2014)।

- **आदिवासी मनोविज्ञान:** यसले आदिवासी ज्ञान, अस्तित्व र उपचारको पद्धतिलाई समर्थन गर्दछ र सोही बमोजिमको उदाहरण प्रस्तुत गर्छ (Kovach, 2009)।

- **डिजिटल अभिलेखन र प्रवाह:** ओपन-एक्सेस प्रकाशन र डिजिटल माध्यमद्वारा यस्तो दर्शन विश्वभर बाँड्न सकिन्छ, जसमा स्थानीय स्वामित्व सुरक्षित रहन्छ।

## १.५ सम्भावित प्रयोगहरू

- मानसिक स्वास्थ्य उपचार: साम उ:प्मा मुन्धुममा आधारित परामर्श मोडेल विकास गर्न सकिन्छ।
- सांस्कृतिक परामर्श मोडेलहरू: सामुदायिक मूल्य र आदिवासी दर्शनमा आधारित परामर्श अभ्यासहरू समावेश गर्न सकिन्छ।
- शैक्षिक दर्शन: साम-उ:प्मालाई तुलनात्मक दर्शन र ज्ञानशास्त्रको नयाँ धाराको रूपमा प्रस्तुत गर्न सकिन्छ।
- उपचार कला र अनुष्ठान अध्ययन: भजन, कथा, अनुष्ठानलाई उपचार र आदिवासी कलाको अध्ययनमा एकीकृत गर्न सकिन्छ।

सारांशमा,

साम-उ:प्मा मुन्धुम दर्शन प्राचीनकालदेखि हामीमाझ जीवित रहेको एक आदिवासी विश्वदृष्टिकोण हो जसले आध्यात्मिक, मानसिक र सामुदायिक पक्षलाई एकीकृत गर्छ। यसले सम्बन्धमूलक समग्रता, मौखिक ज्ञान, र अनुष्ठान अभ्यासलाई जोड दिंदै स्वास्थ्य र उपचारका प्रचलित धाराहरूको विकल्प दिन्छ। किरात लिम्बू परम्पराले भन्छ—हामीले मन ठिक राख्न आत्मा, समाज र पूर्वजको आदर गर्नुपर्छ र आफ्नो व्यवहार राम्रो बनाउनुपर्छ।

# अध्याय २: दर्शनको अवतरण

## २.१ उत्पत्ति

सामु-उ:प्मा मुन्धुम दर्शनको उद्गम नेपालको पूर्वी पहाडमा बसोबास गर्ने किरात लिम्बू समुदायको जीवनअनुभव र आध्यात्मिक परम्परामा भएको हो। अन्य धेरै आदिवासी विश्वदृष्टिहरूझैं, यो दर्शन पाठ्यपुस्तकहरूमा लेखिएको होइन—यो त लय, अनुष्ठान, र कथावाचनको माधुर्यमा मौखिक रूपमा हस्तान्तरण भएको हो। यो दर्शन कक्षा कोठामा होइन, समुदायमा जन्मिएको हो।

यो अध्यायले यस दर्शनको विकास कसरी भयो र किन आजको विश्वमा मानसिक तनाव र सांस्कृतिक विच्छेदनको बेलामा यसलाई पुनःसम्झनुपर्ने भएको छ भन्ने कुराको अन्वेषण गर्छ। यसको मूलमा, यो दर्शन एउटा यथार्थपरक प्रतिक्रिया हो—आजको यान्त्रिक र व्यक्तिवादी मानसिक स्वास्थ्य दृष्टिकोणको विकल्प हो। साम-उ:प्मा दर्शनले सम्झाउँछ कि कल्याण केवल व्यक्तिगत होइन—यो आत्मिक, सम्बन्धात्मक र पारिस्थितिकीय हुन्छ।

किरात विश्वास अनुसार, जब कुनै व्यक्ति आघात, डर, शोक वा मानसिक धक्का भोग्छ, त्यसबेला आत्मा (साम) शरीरबाट छुट्टिन सक्छ। यस्तो अवस्थाले मानसिक, भावनात्मक, र शारीरिक असन्तुलन ल्याउँछ। जैविक मानसिक चिकित्साले लक्षणहरूलाई प्रायः मस्तिष्कसँग मात्र जोड्दछ, तर यो आदिवासी दृष्टिकोणले यस्ता पीडालाई आत्मा, शरीर, प्रकृति र पुर्खाबीचको सन्तुलनको विघटनको रूपमा बुझ्दछ।

यस्तै अवधारणाहरू किरात लिम्बू समुदायमा मात्र नभएरु विश्वका अन्य आदिवासी परम्पराहरूमा पनि पाइन्छन्—जस्तै: ल्याटिन अमेरिकी संस्कृतिमा "सुस्टो" को अवधारणा (Gone, 2013) वा

साइबेरियन शमानी परम्परामा आत्मा हराउने मान्यता रहेका छन् (Krippner, 2002)।

**उ:प्मा**—आत्मा बोलाउने अनुष्ठान—केवल प्रतीकात्मक होइन। यो एक उपचार प्रक्रिया पनि हो, जुन सांस्कृतिक तर्कमा आधारित छ र मुन्धुमको मौखिक दर्शनद्वारा निर्देशित हुन्छ। यस प्रक्रियामा उपचारकर्ता (साम्बा वा फेदाङ), मन्त्रपाठ, प्रतीकात्मक वस्तुहरू, र समुदायको सहभागिता समावेश हुन्छन्। यसले न केवल व्यक्तिको सम्पूर्णताको पुनःस्थापना मात्र नगरेर उसको जीवनको व्यापक जालमा पुनःजीवन प्रदान गर्छ। यो अनुष्ठान ब्रह्माण्डसँगको सन्तुलन पुनःस्थापनाको माध्यम बन्छ र पीडाको अर्थ निकाल्ने प्रक्रिया हो।

पछिल्ला दशकहरूमा, आदिवासी मनोविज्ञान र उपनिवेशोत्तर अध्ययनका धेरै विद्वानहरूले पश्चिमी मनोवैज्ञानिक मोडेलहरूको वर्चस्वमाथि प्रश्न उठाएका छन्। स्मिथ (2012) र विल्सन (2008) जस्ता विद्वानहरूले आदिवासी ज्ञान प्रणालीहरूलाई पूर्ण र स्वतन्त्र प्रणालीको रूपमा सम्मान गर्नुपर्ने पक्षमा तर्क राखेका छन्। साम-उ:प्मा मुन्धुम दर्शनले यो प्रयासलाई साथ दिंदै मानसिक अवस्था, पीडा र उपचारको एक विशिष्ट किरात दृष्टिकोण प्रस्तुत गर्दछ।

यो अध्यायले आगामी अध्यायहरूको आधार तय गर्छ—साम, उ:प्मा, र मुन्धुम कसरी एकअर्कासँग मिलेर रोगको उपचार गर्छन्। साथै, जीवनको सन्तुलन पुनःस्थापना र अर्थपूर्ण जीवन निर्माणमा सहयोग पुर्‍याउँछन्। वर्तमान समयलाई यो एक निम्तो हो—मनोवैज्ञानिक, दार्शनिक, उपचारकर्ता र जिज्ञासुहरू—जजसले किनारा लगाइएको लय र दीपशिखामा बाँचेको ज्ञान सुन्न चाहन्छन्।

## २.२ आदिवासी विश्वदृष्टिको आवश्यकता

समसामयिक विश्वमा जहाँ प्रविधि, उपभोक्तावाद, र आधुनिकता तीव्र गतिमा अघि बढिरहेको छ, त्यहाँ मानव अस्तित्व, प्रकृति, र सामुदायिक सम्बन्धबीचको सन्तुलन क्रमशः खल्बलिँदै गएको छ। मानसिक स्वास्थ्यको समस्या, आत्महत्या, चिन्ता, अलगाव, र सांस्कृतिक विचलन बढ्दै गएका छन्। यस्तो अवस्थामा, पश्चिमकेन्द्रित चिकित्सा र मनोविज्ञानले पूर्ण समाधान दिन नसकेको अनुभूति विश्वभर फैलिँदैछ (Kirmayer et al., 2014)।

यस्तो सन्दर्भमा आदिवासी विश्वदृष्टिकोणहरूको आवश्यकता थप बलियो भएर देखा परेको छ। आदिवासी दर्शनहरू, जस्तै कि साम-उ:प्मा मुन्धुम दर्शन, केवल सांस्कृतिक सम्पदा होइनन्; यी सम्पूर्ण जीवनपद्धतिका ज्ञानपद्धति हुन् जसले आपसी सम्बन्ध, सामुदायिकता, प्रकृति र आत्माको सन्तुलनलाई केन्द्रमा राख्छन् (Kovach, 2009; Smith, 2012)।

साम-उ:प्मा मुन्धुम दर्शनमा “साम” आत्मा हो, “उ:प्मा” हराएको आत्मालाई बोलाउने अनुष्ठान हो, र “मुन्धुम” जीवनसँग जोडिएको मौखिक ज्ञान प्रणाली हो। यी अवधारणाहरू आजको मानसिक, सामाजिक र नैतिक संकटको समाधानका वैकल्पिक मार्ग हुन्। जब आधुनिक समाजमा मानिसहरू एक्लोपन, निराशा र आध्यात्मिक रिक्तताको अनुभव गरिरहेका छन्, तब साम-उ:प्माले व्यक्ति, समाज, र ब्रह्माण्डबीचको सम्बन्धलाई पुनःसम्झाउने काम गर्छ (Gone, 2013)।

साम-उ:प्मा जस्ता दर्शनहरूले “सत्य” के हो भन्ने कुरालाई पनि फरक ढंगले बुझाउँछन्। यो आदिवासी ज्ञानको दृष्टिकोण (Smith, 2012; Kovach, 2009) र अनुभववादी दर्शन (Merleau-Ponty, 1962) सँग मेल खान्छ, जसअनुसार सत्य तर्क वा अमूर्त धारणा होइन, प्रत्यक्ष जीवन अनुभव र सम्बन्धबाट उत्पन्न हुन्छ।

साम-उ:प्मा जस्ता आदिवासी दर्शनले सत्य के हो भन्ने कुरा फरक तरिकाले बुझाउँछन्। उनीहरूका अनुसार सत्य किताबमा लेखिएको कुरा वा केवल सोच्ने कुरा होइन, बरु मानिसले जीवनमा अनुभूत गरेको कुरा र आपसी सम्बन्धबाट आउने कुरा हो। यो विचार आदिवासी ज्ञान र अनुभवमा आधारित दर्शनसँग मिल्दोछ।

जस्तो कि एउटा व्यक्ति पारिवारिक अनुष्ठान र समुदायसँगको सम्बन्धबाट मानसिक शान्ति र समभावको अनुभूति गर्छ—त्यो अनुभव उसैका लागि उपचार र "सत्य" बन्छ।

आदिवासी दृष्टिकोणहरूको समावेशले मानसिक स्वास्थ्य उपचारमा साँस्कृतिक सान्दर्भिकता, स्थानीय ज्ञान, र सामाजिक न्यायका आयामहरू जोड्न मद्दत पुऱ्याउँछ (Watkins & Shulman, 2008)। साथै, यस्तो दर्शनले उपनिवेशकालीन ज्ञान संरचनाहरूको आलोचना गर्दै बहुज्ञान पद्धतिहरूको सम्मान र पुनर्स्थापना गर्दछ (Mignolo & Walsh, 2018)।

अतः समसामयिक समयमा साम-उ:प्मा मुन्धुम जस्ता दर्शनहरूको स्थान केवल सांस्कृतिक संरक्षणमा सीमित छैन; ती दर्शनहरू आजको जीवन, स्वास्थ्य, शिक्षा, र सामाजिक रूपान्तरणका लागि सशक्त र प्रासङ्गिक मार्गदर्शन हुन्।

## २.३ साम-उ:प्मा दर्शनको ऐतिहासिक र सांस्कृतिक पृष्ठभूमि

साम-उ:प्मा दर्शनको जरा हिमाली क्षेत्रका प्राचीनतम आदिवासी समुदायहरूमध्येका एक, किरात लिम्बू जनसमुदायको ऐतिहासिक र सांस्कृतिक धरातलमा गहिरो रूपमा गाडिएको छ। शताब्दीयौँदेखि मौखिक परम्परामा जीवित रहँदै आएको लिम्बू विश्वदृष्टिकोणले ब्रह्माण्डशास्त्र, पारिस्थितिकी, अध्यात्म, र सामुदायिक नैतिकताको

समृद्ध एकता प्रस्तुत गर्दछ, जसले उनीहरूको दैनिक जीवन र सांस्कृतिक पहिचानलाई निर्देशित गर्छ (Chemjong, 2003; Sagant, 1996)।

ऐतिहासिक रूपमा किरात सभ्यता आर्यकालीन वैदिक प्रभावभन्दा पहिलाको मानिन्छ (Regmi, 1969; Banerjee, 1955; Sharma, 1989)। किरातहरूको उल्लेख प्राचीन संस्कृत ग्रन्थहरूमा पनि पाइन्छ, जहाँ उनीहरूलाई पर्वतीय बासिन्दा, विशिष्ट संस्कार र आध्यात्मिक अभ्यास गर्ने समुदायको रूपमा वर्णन गरिएको छ (Kumar, 2003; Vaidya, 1993)। किरात महासंघअन्तर्गत पर्ने लिम्बू उपसमुदायले आफ्नै भाषा (लिम्बू/याक्थुङ), परम्परा, र दार्शनिक प्रणालीहरूलाई शताब्दीयौँदेखि विभिन्न राजनीतिक र सांस्कृतिक दबाबहरूको बीचमा पनि संरक्षण गर्न सफल भएको छ (Chemjong, 2003)।

लिम्बू परम्पराको मूलखम्बाका रूपमा मुन्धुम अवस्थित छ—यो मौखिक साहित्यको विशाल खजाना हो जसमा मिथक, नैतिक शिक्षाहरू, वंशावली, ब्रह्माण्ड सम्बन्धी कथा र उपचार अनुष्ठानहरू समावेश छन्। यही मुन्धुममार्फत साम (आत्मा) र उ:प्मा (आत्मा बोलाउने अनुष्ठान) का अवधारणाहरू हस्तान्तरण र संरक्षण गरिन्छ। यी स्थिर कथाहरू होइनन्; जीवन्त परम्परा हुन्, जुन अनुष्ठान, मन्त्रपाठ र पूराना ज्ञानी—फेदाङ्बा/मा, साम्बा, वा येबा/येमा—द्वारा पुस्तौँदेखि हस्तान्तरण हुँदै आएको छ (Sagant, 1996)।

फेदाङ (अनुष्ठान विशेषज्ञ) को सांस्कृतिक भूमिका विशेष रूपमा महत्वपूर्ण छ। यी आध्यात्मिक मार्गदर्शकहरू केवल मानव र आत्मिक संसारबीचका मध्यस्थ मात्र होइनन्, बरु उपचारक, इतिहासकार, र दार्शनिकको भूमिकामा समेत रहन्छन्। उनीहरूले आत्मा बोलाउने अनुष्ठान सञ्चालन गर्छन्, सपना र सङ्केतहरूको व्याख्या गर्छन्, र मुन्धुम पाठमार्फत नैतिक तथा आध्यात्मिक मार्गदर्शन प्रदान गर्छन्।

उनीहरूको कार्यद्वारा आत्मा हराएमा बोलाउने अवधारणा र उ:प्मा अनुष्ठानमार्फत उपचारको ज्ञान लिम्बू जीवनमा स्थायी रूपमा जरा गाडेर बसेको छ।

साथै, साम-उ:प्मा दर्शनलाई लिम्बू समुदाय र उनीहरूको वातावरणबीचको पारस्परिक सम्बन्ध नबुझी बुझ्न सकिँदैन। पवित्र वन, नदी र ढुंगाहरूलाई जीवित अस्तित्वका रूपमा मानिन्छ र अनुष्ठान जीवनमा ती अभिन्न अङ्ग हुन्। धेरैजसो उपचार अनुष्ठानहरू प्राकृतिक परिवेशमा गरिन्छन्, जसले प्रकृतिप्रति सम्मान र अन्तरनिर्भरताको पारिस्थितिक नैतिकतालाई पुनः पुष्टि गर्छ।

उपनिवेशकालीन र उत्तर-उपनिवेशकालीन सामना र प्रभावहरूले यी आदिवासी अभ्यासहरूको निरन्तरतामा खतरा उत्पन्न गराएका छन्। राज्य संरचनाको विस्तार, पश्चिमेली औषधिको प्रवेश, र धार्मिक रूपान्तरण प्रयासहरूले परम्परागत उपचारक र मुन्धुम परम्पराको स्थानलाई सीमित बनाएका छन्। यद्यपि, लिम्बू समुदायको जुझारुपन र मौखिक ज्ञानप्रतिको श्रद्धाले यी परम्पराहरूको संरक्षण र पुनरुत्थान सम्भव बनाएको छ (Smith, 2012)।

आज, साम-उ:प्मा दर्शन केवल पूर्वजहरूको ज्ञानको संग्रह मात्र होइन; यो एक शक्तिशाली दृष्टिकोण हो, जसद्वारा मानसिक स्वास्थ्य, पारिस्थितिक विनाश, र सांस्कृतिक विच्छेदनजस्ता आधुनिक समस्याहरूलाई बुझ्न र समाधान गर्न सकिन्छ। जब हामी यो दर्शनलाई यसको ऐतिहासिक र सांस्कृतिक सन्दर्भमा राखेर हेर्छौँ, तब हामी यसलाई एक परिपक्व, अनुकूलनशील, र आध्यात्मिक रूपमा गहिरो प्रणालीका रूपमा स्वीकार गर्न सक्छौँ, जसले किरात लिम्बूहरूलाई मात्र होइन, सम्भावित रूपमा व्यापक विश्वलाई पनि समग्र कल्याणको दिशामा मार्गदर्शन गर्न सक्छ।

# अध्याय ३: मुख्य अवधारणाहरू

सााम-उ:प्मा मुन्धुम दर्शन तीनवटा गहन अवधारणाहरूको त्रिकोणात्मक खम्बाका आधारमा उभिएको छ। पहिलो थाम साम (आत्मा वा चेतन शक्ति) हो, दोस्रो उ:प्मा (हराएको आत्मालाई फिर्ता बोलाउने विधि), र तेस्रो थाम मुन्धुम  अर्थात् किरातहरूको मौलिक मौखिक दर्शन र ज्ञान परम्परा हो। यी अवधारणाहरू केवल परिभाषात्मक होइनन्; यी किरात जीवनदर्शन, उपचार परम्परा, र सामूहिक अस्तित्वको केन्द्र हुन्। यो अध्यायमा हामी ती अवधारणाहरूको विस्तृत अर्थ, अन्तरसम्बन्ध, र समकालीन सन्दर्भमा तिनीहरूको महत्त्वको गहिरो विश्लेषण गर्नेछौं।

## ३.१. साम (Sām): आत्मा र चेतन शक्ति

किरात परम्परामा "साम" भन्नाले आत्मा, चेतना, जीवन ऊर्जा वा सातोलाई जनाउँछ। आत्मा केवल धार्मिक विश्वास होइन, यो मानव अस्तित्वको आधारभूत तत्व हो। आत्मा भनेको मानव शरीरभित्रको अदृश्य तर जीवनदायिनी शक्ति हो।

**३.१.१ सामको गुणहरू:**

- अनुभूत योग्य तर अदृश्य: साम देखिँदैन, तर सपना, अन्तर्ज्ञान, वा आत्मिक संवादमार्फत अनुभव गर्न सकिन्छ।
- हराउन सक्ने चेतना: गम्भीर आघात, डर, वा भावनात्मक चोटका कारण साम शरीरबाट अलग हुन सक्छ।
- पुनःस्थापना योग्य: साम एकपटक हराएपछि पनि पुनः बोलाएर पुनर्स्थापना गर्न सकिन्छ।

#### ३.१.२ साम र मानसिक स्वास्थ्य:

साम गुमाउँदा मानसिक असन्तुलन उत्पन्न हुन्छ—जसमा उदासी, भ्रम, आत्मविमुखता वा आत्महत्या प्रवृत्ति देखा पर्न सक्छ। यो अवस्था पश्चिमी मनोविज्ञानमा "trauma", "dissociation" वा "loss of self" को रूपमा व्याख्या गरिन्छ (van der Kolk, 2014; Krippner, 2002)। तर किरात दर्शनमा यो आत्माको विच्छेदन र सन्तुलन विघटनको सूचक हो।

## ३.२ उ:प्मा: आत्मा पुनःस्थापनाको सांस्कृतिक विधि

**उ:प्मा** भन्नाले हराएको सामलाई पुनःबोलाउने प्रक्रिया हो। यो केवल धार्मिक अनुष्ठान होइन, बरु सांस्कृतिक परिप्रेक्ष्यमा आधारित चिकित्सीय प्रक्रिया हो, जसले मानसिक र आत्मिक सन्तुलन पुनःस्थापित गर्छ।

#### ३.२.१ उ:प्माको विशेषता:

- अनुष्ठानिक प्रक्रिया: साम्बा वा फेदाङ जस्ता आध्यात्मिक व्यक्तिहरूको माध्यमबाट सम्पन्न गरिन्छ।
- सामाजिक सहभागिता: परिवार वा समुदायको सहयोगमा अनुष्ठान सम्पन्न गरिन्छ।
- सांस्कृतिक संवादको भाषा: ध्वनि, मन्त्र, र प्रतीकमार्फत आत्मासँग संवाद हुन्छ।

#### ३.२.२ उ:प्मा र आधुनिक मनोचिकित्सा:

उ:प्मा प्रक्रिया आधुनिक "psychotherapy", "guided meditation" वा "trauma healing" सँग सादृश्य भए तापनि, यसले संस्कृति, परम्परा, र अध्यात्ममा आधारित उपकरणहरू प्रयोग गर्छ (Gone, 2013; Levine, 1997)।

## ३.३ मुन्धुम (Mundhum): मौलिक दर्शन र ज्ञान प्रणाली

मुन्धुम किरातहरूको मौलिक मौखिक परम्परा हो, जसले ब्रह्माण्ड, जीवन, आत्मा, रोग र उपचारको दृष्टिकोण दिन्छ। मुन्धुम लेखिएको होइन—यो गाइने, सम्झिने, र जीवन्त अभ्यास गर्ने ज्ञान प्रणाली हो।

### ३.३.१ मुन्धुमका स्वरूप:

- पुर्खाबाट हस्तान्तरण भएको ज्ञान: पुस्तादरपुस्ता बाचन हुने ज्ञान।
- अनुभवमा आधारित दर्शन: मुन्धुम तर्क होइन, अनुभूति र लयमा आधारित चेतना हो।
- ध्वनि र प्रतीकको दर्शन: मुन्धुमको लय र ध्वनिमा नै उपचारात्मक ऊर्जा हुन्छ।

### ३.३.२ मुन्धुमको भूमिका साम र उ:प्मामा:

मुन्धुमले सामको व्याख्या गर्छ, उ:प्मालाई विधि दिन्छ, र समग्र उपचार दर्शनलाई सांस्कृतिक संरचना प्रदान गर्छ। यो साम-उ:प्मा दर्शनको दार्शनिक मेरुदण्ड हो।

## ३.४ अन्तर्सम्बन्ध

तीन धारणाबीचको सम्बन्ध यस प्रकार छ।

| **अवधारणा** | **भूमिका** | **सम्बन्ध** |
|---|---|---|
| **साम** | आत्मा/चेतना | मानसिक सन्तुलनको मूल तत्व |
| **उ:प्मा** | आत्मा फिर्ता बोलाउने विधि | उपचारको सांस्कृतिक प्रक्रिया |
| **मुन्धुम** | मौखिक दर्शन | चिन्तनको संरचनात्मक आधार |

यी तीन तत्वहरू एकअर्कामा गासिएका छन्—एकको अभावमा सम्पूर्ण चिन्तन अपूरो हुन्छ। साम गुम्दा उ:प्मा आवश्यक हुन्छ; उ:प्मा मुन्धुमद्वारा निर्देशित हुन्छ; मुन्धुम साम र उ:प्माको अर्थ दिन्छ। यसरी साम-उ:प्मा मुन्धुम चिन्तन एक सम्पूर्ण जीवन दर्शन बन्छ।

## ३.५ प्रतीकात्मक र उपचारात्मक भूमिका

### साम (आत्मा), उ:प्मा (सातो बोलाउने), र मुन्धुम (मौखिक ज्ञान) का प्रतीकात्मक र उपचारात्मक भूमिका

साम-उ:प्मा मुन्धुम दर्शन केवल ब्रह्माण्डीय विश्वास र अनुष्ठानमा मात्र होइन, व्यक्ति र समुदायभित्र सन्तुलन कायम गर्नका लागि प्रयोग हुने व्यावहारिक र प्रतीकात्मक उपचार विधिहरूमा पनि आधारित छ। यसको तीनवटा मूल तत्व—साम, उ:प्मा, र मुन्धुम—प्रतीकात्मक र उपचारात्मक रूपमा आपसमा गाँसिएर किरात लिम्बू समुदायको कल्याण, पहिचान र पुनर्स्थापनाको मार्गदर्शक बनेका छन्।

### साम (आत्मा): जीवनशक्ति र मानसिक अखण्डताको प्रतीक

प्रतीकात्मक रूपमा, **साम** जीवनशक्ति वा आध्यात्मिक सारको प्रतिनिधित्व गर्छ, जसले व्यक्तिलाई चेतनशील बनाउँछ। यो केवल

धार्मिक अर्थमा आत्मा होइन, बरु चेतना, पहिचान र जीवनको केन्द्र हो। आत्माको उपस्थिति वा अनुपस्थितिले व्यक्तिको मानसिक सन्तुलन वा संकट निर्धारण गर्छ। सामले व्यक्तिलाई पूर्वज, प्रकृति र ब्रह्माण्डसँग अदृश्य तर शक्तिशाली सम्बन्धमा बाँध्छ (Chemjong, 2003)।

उपचारात्मक रूपमा, जब आत्मा हराएको वा अशान्त भएको ठानिन्छ—जस्तो कि आघात, शोक, डर वा आध्यात्मिक टुटफुटको कारण—त्यसले चिन्ता, तनाव वा मानसिक असन्तुलनको रूपमा देखिन्छ। जैविक मोडलमा जस्तो मानसिक समस्या मस्तिष्कमा सीमित हुँदैन; साम-उ:प्मा दृष्टिकोणमा यो आत्मा र ब्रह्माण्डसँगको सन्तुलन टुटेको संकेत हो। त्यसैले उपचार आत्माको पुनःसन्तुलनमा केन्द्रित हुन्छ, यो रासायनिक औषधि होइन, आध्यात्मिक पुनर्स्थापना हो (Gone, 2013)।

### उ:प्मा (सातो बोलाउने): पुनर्स्थापनाको अनुष्ठान र सम्बन्धको पुनःस्थापना

**उ:प्मा** एकै साथ प्रतीकात्मक अनुष्ठान र उपचार प्रक्रिया हो। प्रतीकात्मक रूपमा, यो आत्माको फिर्तीको सांस्कृतिक अभिनय हो। मन्त्रपाठ, बलि, र आह्वान जस्ता अनुष्ठानात्मक तत्वहरू मिलेर आत्मासँग मेलमिलाप र सम्झनाको गहिरो सांकेतिक सन्देश दिन्छन्। उ:प्मा अनुष्ठानमार्फत आत्मालाई फर्कन निम्तो दिइन्छ, बाटो देखाइन्छ, र स्वागत गरिन्छ—जसले आध्यात्मिक यात्रा र भावनात्मक पुनर्प्राप्तिलाई प्रतिबिम्बित गर्दछ (Sagant, 1996)।

उपचारात्मक दृष्टिले, उ:प्माले सम्बन्ध र आध्यात्मिक सन्तुलन पुनःस्थापित गर्छ। यसमा व्यक्ति, परिवार, समुदाय र प्रकृतिको सहभागिता हुन्छ। सामुदायिक संलग्नताले पीडितको अनुभवलाई वैधता दिन्छ र उपचारलाई सामूहिक स्मृतिमा आधारित बनाउँछ। आत्माको प्रतीकात्मक पुनःआगमनसँगै व्यक्ति अर्थ, पहिचान र

जिम्मेवारीको जालमा पुनः समाहित हुन्छ। यस प्रक्रियाले आन्तरिक शुद्धीकरण, भावनात्मक अभिव्यक्ति, र परिवर्तनलाई प्रोत्साहन दिन्छ—औषधि वा क्लिनिकल निदान बिना उपचार हुन्छ (Kirmayer et al., 2014)।

### मुन्धुम (मौखिक ज्ञान): दार्शनिक प्रणाली र उपचार कथा

**मुन्धुम** लिम्बू समुदायको पवित्र ग्रन्थ मात्र होइन, एक जीवित दार्शनिक प्रणाली पनि हो। प्रतीकात्मक रूपमा, यो पूर्वजहरूको बुद्धि, पौराणिक निरन्तरता, र सांस्कृतिक डीएनएको रूपमा कार्य गर्छ। प्रत्येक मन्त्र र कथा नैतिक शिक्षा, ब्रह्माण्ड दृष्टिकोण, भावनात्मक सहनशक्ति, आत्मिक सुरक्षा, र नैतिक व्यवहारका शिक्षाहरू समेटिएको हुन्छ (Chemjong, 2003)।

उपचारात्मक रूपमा, मुन्धुम उ:प्मा अनुष्ठानको केन्द्रीय हिस्सा हो। विशिष्ट मुन्धुम कथा र श्लोकको पाठले पीडालाई अर्थ दिन्छ। यसले संकटलाई ठूलो ब्रह्माण्डीय र सामाजिक संरचनामा पुनःस्थापित गर्छ। पीडितलाई छुट्टै वा रोगीको रूपमा होइन, तर अस्थायी रूपमा आफ्नो कथा सन्दर्भबाट टाढिएको व्यक्तिको रूपमा लिइन्छ। मुन्धुमको उपचारात्मक शक्ति व्यक्तिको संकटलाई सामूहिक स्मृति र पूर्वजको ज्ञानमा गाभेर टुक्रिएको चेतनालाई पुनः एकीकृत गर्न सघाउँछ (Kovach, 2009)।

### सांकेतिक, प्रतीकात्मक-उपचारात्मक संरचना

यी तीनवटै अवधारणाले मिलेर एक अद्वितीय र आपसमा गाँसिएको प्रणाली निर्माण गर्छन्। साम अस्तित्वको अवस्था हो, उ:प्मा उपचारको विधि हो, र मुन्धुम ज्ञानको मार्गदर्शक हो। प्रतीकात्मक रूपमा, तिनीहरूले आपसी सम्बन्ध, अदृश्य शक्तिप्रति श्रद्धा, र नैतिक उत्तरदायित्वका मूल्यहरू समेट्छन्। उपचारात्मक रूपमा, तिनीहरूले

सम्बन्धमूलक, समग्र, र आध्यात्मिक रूपमा आधारित उपचार पद्धति प्रदान गर्छन्।

आजको विश्व जहाँ मानिसहरू आत्मविहीनता, चिन्ता र विघटनको अनुभव गरिरहेका छन्, त्यहाँ साम, उ:प्मा र मुन्धुमको प्रतीकात्मक र उपचारात्मक अर्थहरूले न केवल सांस्कृतिक अन्तर्दृष्टि दिन्छ, तर मानसिक र आत्मिक पुनर्स्थापनाका लागि शक्तिशाली उपाय प्रदान गर्छ। तिनीहरूको समन्वयले अनुष्ठान, औषधि, दर्शन र कथा बीचको सीमालाई चुनौती दिन्छ। फलस्वरूप पूर्वज परम्परा र समकालीन मानवीय आवश्यकतालाई जोड्ने एक आदिवासी उपचार ढाँचा प्रस्तुत गर्छ।

# ३.६ सैद्धान्तिक रूपरेखा

मुख्य अङ्गहरूको व्याख्या

सैद्धान्तिक रूपरेखा : आत्मा , प्रकृति र चेतनाको उपचारात्मक चक्र




**१. पञ्चतत्व (भूमि, जल, अग्नि, वायु, आकाश)**

यी तत्वहरू केवल भौतिक होइनन्; जीवन, आत्मा र चेतनाको सांसारिक र आध्यात्मिक सेतु हुन्।

**२. सातो र साम**

सातो वा साम: व्यक्ति विशेषको आत्मा वा चेतना मानिसले गुमाउँदा मानसिक, शारीरिक वा सामाजिक समस्या उत्पन्न हुन्छ। साम: जीवनशक्ति, स्मृति, आत्मिक ऊर्जा र सन्तुलनको रूप हो। सातो गुम्दा व्यक्ति अशक्त हुन्छ र उपचार आवश्यक पर्छ।

**३. फेदाङ्बा विधिद्वारा आत्मा बोलाउने उपचार**

साम उ:प्मा भन्नाले फेदाङ्बाद्वारा आत्मा (सतो) बोलाउने किराती परम्परा जनाउँछ। यसले शरीर, मन, आत्मा र ब्रह्माण्डीय शक्तिबीच पुनः सन्तुलन ल्याउँछ।

**४. मानव-प्रकृति-पितृबीचको सम्बन्ध**

रोग वा सङ्कट केवल व्यक्तिगत होइन; यो प्रकृति, पितृ र जीवनशैलीसँगको सन्तुलन गडबड वा विच्छेद भएको संकेत हो।

**५. पुनर्मिलन र आत्मिक पुनर्जागरण**

आत्मा फिर्ता भएपछि व्यक्ति चेतनशील, स्थिर, र सन्तुलित हुन्छ। पुनः सम्पूर्ण जीवन प्रणालीसँग जोडिन्छ — आफ्नै जरा र ब्रह्माण्डीय तत्वहरूसँग सम्बन्ध राखिन्छ।

सार,

| क्षेत्र | विवरण |
|---|---|
| **ज्ञान सिद्धान्त (Epistemology)** | ज्ञान प्रकृति, पितृ सम्झना (मुन्धुम), र अन्तरात्माको अनुभूतिबाट आउँछ। |
| **तात्त्विक दृष्टि (Ontology)** | अस्तित्व अनेक होइन — आत्मा, तत्व र ब्रह्माण्ड एकै चक्रका अङ्ग हुन्। |
| **नैतिक दृष्टि (Ethics)** | सन्तुलन कायम राख्ने कर्म नै नैतिक हो; अहंकार वा विचलन नै सङ्कटको कारण। |
| **सौन्दर्य दृष्टि (Aesthetics)** | मन्त्र, अनुष्ठान, गीत र प्रकृति– यी सबै जीवनदर्शनका कलात्मक स्वरूप हुन्। |

# अध्याय ४: दार्शनिक संरचना

साम-उ:प्मा मुन्धुम दर्शन सांस्कृतिक परम्परा एवम् एक पूर्ण विकसित दर्शन प्रणाली हो, जसमा अस्तित्ववाद (अस्तित्वको समझ), ज्ञानमीमांसा (ज्ञानको सिद्धान्त), र पीडा तथा उपचारको दर्शन समावेश छन्। यस अध्यायमा यस दर्शनको आन्तरिक संरचना यसको विश्वदृष्टि, तर्क, र नैतिक आधारको विश्लेषणमार्फत प्रस्तुत गरिएको छ।

## ४.१ अस्तित्ववाद: सम्बन्धात्मक अस्तित्व र मानव आत्मा

यस दर्शनको केन्द्रमा रहेको छ—मानव स्वतन्त्र प्राणी नभई सम्बन्धहरूको जालमा गाँसिएको अस्तित्व हो: शरीर, आत्मा, समुदाय, पुर्खा र प्रकृतिसँग मानिस बाँचेको हुन्छ। साम भनेको यही सन्तुलन कायम राख्ने आत्मिक शक्ति हो। जब व्यक्ति यी तत्वहरूसँग विच्छेद वा टाढा हुन्छ, तब पीडाको उदय हुन्छ।

### ४.१.१ शरीर, आत्मा र चेतनाको एकीकृत स्वरूप

पश्चिमी द्वैतवादी दर्शन (जस्तै डेस्कार्टको मन–शरीर विभाजन) को विपरीत, किरात दृष्टिकोण समग्रतामूलक छ। शरीर र साम विरोधी होइनन्—यी सहअस्तित्वमा रहन्छन्। आत्मा शरीरमा अस्थिर रहन्छ; यसले भावनात्मक, पर्यावरणीय वा आध्यात्मिक अवस्थाअनुसार बाह्यगमन वा पुनःप्रवेश गर्न सक्छ।

### ४.१.२ ब्रह्माण्डीय पारस्परिकता

मानव जीवन ब्रह्माण्डसँग अविच्छेद्य रूपले सम्बन्धित छ। प्रकृति, पुर्खाहरूको आत्मा, सामाजिक गतिशीलता, र पर्यावरणीय सन्तुलन सबैले मिलेर एकीकृत क्षेत्र बनाउँछन्। तीमध्ये कुनै एक पक्षमा आएको

असन्तुलन—जस्तै: पारिस्थितिक संकट वा आत्मिक उपेक्षाले आत्मा विच्छेदन र मानसिक संकट निम्त्याउन सक्छ।

यो सम्बन्धात्मक अस्तित्ववादी दृष्टिकोण अन्य आदिवासी दर्शनहरूमा पनि पाइन्छन् तिनीहरूसित साम उ:प्मा दर्शन मिल्दोजुल्दो छ, जस्तै: अन्डियन “Ayllu” वा अफ्रिकन “Ubuntu”, जसले व्यक्तिगतताभन्दा सहअस्तित्वलाई महत्त्व दिन्छ (Gonzales, 2010)।

## ४.२ ज्ञानमीमांसा: अनुभव, अनुष्ठान र ध्वनिबाट ज्ञान प्राप्ति

साम-उ:प्मा प्रणालीमा ज्ञान प्रयोगशाला वा कक्षाकोठामा उत्पादन हुँदैन। यो अनुष्ठानहरूमा सिर्जना हुन्छ, गीतहरूमा सम्झिन्छ, र शरीरमा बाँचिन्छ।

### ४.२.१ मौखिक ज्ञान: पवित्र विधि

मुन्धुमले रूपक, लय, र पुनरावृत्तिको माध्यमबाट ब्रह्माण्ड विज्ञान र नैतिकता समेट्छ। सत्य तर्कद्वारा होइन—अनुभूत गर्ने, सुन्ने, महसुस गर्ने, र आत्मसात् गर्ने माध्यमबाट प्रकट हुन्छ। यो ज्ञानको ढाँचा अनुभवात्मक र प्रतीकात्मक हुन्छ, स्थान र सम्बन्धमा जरा गाडिएको हुन्छ।

### ४.२.२ ध्वनि र मन्त्र: ज्ञानका साधन

उ:प्मा अनुष्ठानमा प्रयोग गरिने मन्त्रहरू केवल प्रदर्शन होइनन्; यी स्मृति र उपचारका प्रविधिहरू हुन्। ध्वनिको कम्पनात्मक गुण आत्मा पुनःस्थापनाको माध्यम बन्छ। यसरी, सुनाई स्वयं ज्ञान ग्रहण गर्ने पवित्र क्रियामा परिणत हुन्छ।

साम-उ:प्मा मुन्धुम दर्शन एक जीवित आदिवासी विश्वदृष्टिकोण हो जसले आध्यात्मिक, मानसिक र सामुदायिक पक्षलाई एकीकृत

रूपमा हेर्ने गर्छ। यसले सम्बन्धमूलक समग्रता, मौखिक ज्ञान, र अनुष्ठान अभ्यासलाई जोड दिंदै मानसिक स्वास्थ्य र उपचारका प्रचलित धाराहरूको विकल्प दिन्छ। किरात लिम्बू परम्परामा आधारित यो दर्शनले समावेसी मानसिक स्वास्थ्यको पुनःकल्पना गर्न हाम्रो सोचमा आध्यात्मिकता, समुदाय र पूर्वजहरूको सम्मान ल्याउन आह्वान गर्दछ।

## ४.३ विवेचना

यो दर्शन आदिवासी ज्ञान दृष्टिकोण (Smith, 2012; Kovach, 2009) र अनुभववादी दर्शन (Merleau-Ponty, 1962) सँग मेल खान्छ, जसअनुसार सत्य भन्ने कुरा केवल दार्शनिक तर्क, तर्कशक्ति, वा मनमा बनाइएका विचार (कल्पना) मात्र होइन; बरु त्यो मानिसले आफैंले जीवनमा भोगेका अनुभवहरू, उसले अरू मानिस, प्रकृति र समुदायसँग बनाएका सम्बन्धहरूबाट बिस्तारै महसुस गरिने र बुझिने कुरा हो भन्ने मानिन्छ।

**उदाहरण:**

*एउटा मानिस गहिरो दुःखमा परेका बेला उसले आफ्ना पुर्खाको पूजा, परिवारको साथ, र परम्परागत अनुष्ठानबाट भावनात्मक राहत पाउँछ। यस अनुभवबाट उसले के महसुस गर्छ भने—उपचारको प्रक्रिया केवल औषधि वा मनोवैज्ञानिक सल्लाहबाट मात्र होइन, आत्मा, सम्बन्ध, र संस्कृतिसँगको पुनःसम्पर्कबाट पनि हुन्छ।*

यो अनुभव उसैका लागि “सत्य” बन्छ—किनभने उसले प्रत्यक्ष रूपमा त्यो उपचारको प्रभाव महसुस गर्ने गर्दछ।

यस्तो सत्य कुनै किताबमा पढिएको ज्ञान होइन; उसले जीवनमा भोगेको, अनुभूत गरेको र सम्बन्धमार्फत पाएको ज्ञान हो।

यसले अनुभववादी र आदिवासी ज्ञानपद्धतिको दृष्टिकोणलाई व्यावहारिक रूपमा बुझ्न मद्दत गर्छ।

## ४.४. पीडा र उपचारको सिद्धान्त

साम-उ:प्मा दर्शनले सांस्कृतिक सन्दर्भमा आधारित पीडाको सिद्धान्त प्रस्तुत गर्छ—जहाँ रोग सामको ह्रास वा दुर्बलताबाट उत्पन्न हुन्छ, न कि नैतिक कमजोरी वा केवल जैविक असन्तुलनबाट।

### ४.४.१ पीडाका कारणहरू

- आत्मा गुमाउनु (सामको विचलन)
- आत्मिक वा पुर्खाहरूको उपेक्षा
- आघात, शोक वा भय
- सांस्कृतिक विच्छेदन र पारिस्थितिक असन्तुलन

### ४.४.२ उपचारको प्रक्रिया

- उ:प्मा मार्फत अनुष्ठानिक पुनर्स्थापना
- समुदायको सहभागिता र पुर्खा आह्वान
- प्रकृति र आध्यात्मिक ब्रह्माण्डसँग पुनः सन्तुलन स्थापना

मुन्धुमको यो समग्र प्रक्रिया व्यक्तिवादी जैविक मोडेलसँग मिल्दैन—किनभने यसले केवल व्यक्तिलाई मात्र उपचार नगरेर परिवार, समाज, वातावरण र पुर्खालाई समग्रमा सम्बन्धात्मक, लयात्मक र आत्मिक रूपले अनुकूलित उपचार गरिदिन्छ।

## ४.५ हेरचाह र उत्तरदायित्वको नैतिकता

साम-उ:प्मा दर्शन सम्बन्धमा आधारित नैतिक मूल्यमा आधारित छ, जहाँ:

- उपचारकर्ता प्रभुत्वशाली नभई मार्गदर्शक हुन्छ।

- बिरामी हुनु मानिस बिग्रिएको होइन, केवल अस्थायी रूपमा असम्बन्धित भएको हुन्छ।
- समुदाय केवल साक्षी होइन, सक्रिय सहभागी हुन्छ।
- ब्रह्माण्ड निष्क्रिय होइन, उपचारको सजीव सहयात्री हुन्छ।

यो ढाँचाले उपनिवेशोत्तर तथा करुणामूलक हेरचाह दृष्टिकोणलाई समर्थन गर्छ, जुन केवल आदिवासी सन्दर्भमा मात्र होइन, वैश्विक मानसिक स्वास्थ्य बहसमा पनि सान्दर्भिक हुन्छ।

# अध्याय ५: मुन्धुमको सांस्कृतिक शक्ति

साम-उ:प्मा मुन्धुम दर्शनको केन्द्रमा रहेको मुन्धुम केवल मौखिक ज्ञानको स्रोत होइन—यो सांस्कृतिक शक्ति, ब्रह्माण्ड चेतना, र जीवन दृष्टिकोणको वाहक हो। यो अध्यायमा मुन्धुमको संस्कार**,** धर्म**,** र उपचारसँग सम्बन्धित कुरा बुझाउँदै**,** यसले किरात समुदायको जीवन र उपचार पद्धतिमा गर्ने गरेको योगदान प्रस्ट पारिएको छ।

## ५.१ मुन्धुम: मौखिक परम्पराबाट ब्रह्माण्ड दर्शनतर्फ

मुन्धुम भनेको केवल पुराना कथाहरूको संग्रह होइन; यो किरात समुदायको जीवित दर्शन हो, जसले जीवन, मृत्यु, आत्मा, प्रकृति, र समाजको अन्तर्सम्बन्धलाई मौखिक परम्पराबाट संरचना दिन्छ। मुन्धुमको रचना श्रुति परम्पराबाट भएको हो, जुन साक्षरताको सट्टा स्मृतिमा टिकेको छ (Kovach, 2009)।

**१.१. मिथक, लय, र मौखिकता**

- मुन्धुम गीत, लयात्मक मन्त्र, र प्रतीकात्मक भाषाको संयोजन हो।
- कथाहरू केवल मनोरञ्जन होइन, सामाजिक शिक्षा, नैतिक मूल्य र आध्यात्मिक बोधका माध्यम हुन्।
- मौखिकता सजीवताको सूचक हो—मुन्धुम वाचन गर्ने प्रत्येक पलमा ज्ञान पुनःसिर्जना हुन्छ (Smith, 2012)।

### १.२. ब्रह्माण्ड दृष्टिकोण

- मुन्धुममा ब्रह्माण्डलाई सजीव, चैतन्यमय, र सम्बन्धमा आधारित रूपमा हेर्ने गरिन्छ।
- प्रकृति, मानव, र आत्माको सन्तुलन नै शान्तिको आधार हो भन्ने अवधारणा यसमा रहेको छ।

## ५.२ मुन्धुम र आत्मा: सम्बन्धको पुनःस्थापना

सामको विचलन भएको अवस्थामा मुन्धुम आत्माको खोजी र पुनःस्थापनाको मार्गदर्शक बन्छ। मुन्धुमको पाठले आत्मालाई बोलाउँछ, उसँग संवाद गर्छ, र शरीरमा पुनःस्थापनाको प्रक्रियालाई निर्देशन दिन्छ।

### २.१. मन्त्रको शक्ति

- मुन्धुम मन्त्रले ध्वनि र भावनात्मक ऊर्जा उत्पन्न गर्छ, जसले आत्मा र शरीरबीचको सम्बन्ध पुनःस्थापित गर्न सहयोग पुऱ्याउँछ।
- मन्त्र केवल शब्द होइन; यी आध्यात्मिक कम्पन हुन् (Merleau-Ponty, 1962) भन्ने मर्मलाई प्रस्तुत मुन्धुमले प्रदर्शन गर्दछ।

### २.२. आत्माको पुनःजागरण

- मुन्धुमको वाचन र अनुष्ठानले आत्मा गुमाएका व्यक्तिलाई पुनः आत्मस्फूर्त बनाउँछ।
- आत्मा गुमाउनु भनेको केवल मानसिक अवस्था होइन, आध्यात्मिक विच्छेदनको अवस्था हो भन्ने चेतना मुन्धुमबाट प्राप्त हुन्छ।

## ५.३ सांस्कृतिक अस्तित्वको रक्षा

मुन्धुम दर्शनका साथै सांस्कृतिक उत्तरजीविताको शक्ति हो। यो किरात समुदायको पहिचान, इतिहास र दार्शनिक स्वतन्त्रताको मूर्धन्य अभिव्यक्ति हो।

- मुन्धुम वाचन सामूहिक स्मृति र सामाजिक ऐक्यवद्धताको आधार हो।
- यसले नयाँ पुस्तालाई सांस्कृतिक शिक्षाको माध्यम प्रदान गर्छ।
- मुन्धुमको अभ्यासले उपनिवेशीय ज्ञान प्रणालीहरूबीच वैकल्पिक दृष्टिकोण प्रस्तुत गर्छ (Smith, 2012)।

## ५.४ किरात परम्परामा शरीर र आत्मा

किरात लिम्बू समुदायको परम्परागत ज्ञान र जीवनशैलीमा शरीर र आत्माबीचको सम्बन्ध एक द्वैतीयताको हैन, बरु एकताको रूप हो। पश्चिमी मनोविज्ञान वा दर्शनमा शरीर (शारीरिक वस्तु) र आत्मा (चेतनाको सिद्धान्त) बीच स्पष्ट सीमारेखा कोरिएको हुन्छ। तर साम-उ:प्मा मुन्धुम दर्शनमा शरीर र आत्माको सम्बन्ध सँगसँगै बग्ने, संवाद गर्ने, र एकअर्कामा सन्तुलन ल्याउने प्रक्रिया हो (Chemjong, 2003; Sagant, 1996)।

शरीर आत्माको वासस्थान हो, जहाँ आत्माको सन्तुलनले नै स्वास्थ्य, चेतना, भावना र सामाजिक उत्तरदायित्वलाई निर्देशित गर्छ। साम (आत्मा) यदि आघात, डर, शोक वा सामाजिक विच्छेदनका कारण शरीरबाट टाढा गएमा शरीर कमजोर, अशक्त, वा मानसिक रूपमा असन्तुलित देखिन थाल्छ। शरीर, आत्माको घर र मौन भाषा हो, जहाँ पीडाले लक्षणका रूपमा आफूलाई देखाउँछ (Gone, 2013)।

यस सन्दर्भमा उ:प्मा आत्मासँगको संवादको प्रक्रिया हो। जब आत्मा शरीरबाट विच्छेदित हुन्छ, फेदाङ्बा/मा वा साम्बा जस्ता परम्परागत ज्ञानवाहकहरू आत्मालाई फर्काउने अनुष्ठानमार्फत आत्मालाई सोध्छन्—"तिमी कहाँ हरायौ?"। यो केवल अध्यात्मिक आह्वान होइन, शरीर र आत्माबीच पुनःसम्बन्ध स्थापित गर्ने सांकेतिक अभ्यास पनि हो। उपचारको सुरुवात आत्मालाई सुनिने बनाउनु हो, शरीरको संकेतलाई बुझ्नु हो (Kovach, 2009)।

मुन्धुममा यस सम्बन्धको वर्णन पौराणिक कथा, प्रतीकात्मक संवाद र अनुष्ठानिक कथाहरूमा पाइन्छ। उदाहरणका लागि, कुनै व्यक्तिको आत्मा हराएपछि शरीर निर्जीवजस्तै हुन्छ, तर उ:प्मा अनुष्ठानपछि पुनः ऊ चेतनशील र ऊर्जावान बन्न जान्छ। यस घटनाले दर्शाउँछ—शरीर केवल भौतिक यन्त्र होइन; आत्माको उपस्थिति वा अनुपस्थितिले यसको जीवनको गति प्राप्त हुन्छ (Chemjong, 2003)।

साम-उ:प्मा दृष्टिकोणमा शरीर र आत्मा संवादका सहयात्री हुन्। शरीर पीडित हुँदा आत्मा बोलाइन्छ; आत्मा अशक्त हुँदा शरीर थाक्छ। उपचारको प्रक्रिया भनेको यिनको संवादलाई पुनःस्थापित गर्नुहो—यो सुनिने, बोलिने, र बुझिने प्रक्रिया हो (Sagant, 1996)।

आजको मानसिक स्वास्थ्यमा मानिसका चिन्ताहरूलाई बुझ्न यो संवादिक दृष्टिकोण सन्दर्भपूर्ण छ। आत्मा र शरीर अलग होइनन् भन्ने किरात परम्पराको यो दर्शनले समकालीन मानवको एक्लोपन, मानसिक विचलन, र शरीरप्रतिको उपेक्षालाई चुनौती दिन्छ। साम-उ:प्मा मुन्धुम दर्शनले व्यक्तिलाई पुनः आफ्नो शरीरसँग सुन्न, आत्मासँग संवाद गर्न, र सामूहिक जीवनमा फेरि सन्तुलन ल्याउने मार्ग देखाइदिन्छ (Gone, 2013; Kovach, 2009)।

## ५.५ उपचारको सांगीतिक स्वरूप

मुन्धुमको लय, ध्वनि, र संरचना आफैंमा उपचारको साधन हो। आधुनिक संगीत–चिकित्सा (music therapy) जस्तै, मुन्धुमले पनि ध्वनि, स्मृति र भावना को समिश्रणबाट आत्माको पुनर्संयोजन गर्छ।

- मुन्धुम वाचन एक प्रकारको ध्यान अभ्यास हो।
- यसले भावनात्मक सन्तुलन र मानसिक स्पष्टता दिन्छ।

संक्षेपमा,

मुन्धुम साम-उ:प्मा दर्शनको मुटु हो। यसको सांस्कृतिक शक्ति केवल स्मृतिको बोझ होइन—यो चेतनाको ज्योति हो। जीवन, पीडा, उपचार र अस्तित्वका बारेमा मुन्धुमले दिने ज्ञान केवल किरातहरूको लागि होइन, सम्पूर्ण मानवताका लागि उपयोगी शिक्षाको खानी हो।

## ५.६ अन्तर्दृष्टि र टिप्पणीहरू

घटनाक्रमहरूले देखाउँछन्:

- सातो हराउनु एक सांस्कृतिक रूपमा मान्य मानसिक संकटको व्याख्या हो।
- उ:प्मा जस्ता अनुष्ठान प्रक्रियाहरूले भावनात्मक र सम्बन्धात्मक सन्तुलन पुनःस्थापना गर्छन्।
- सक्रिय उपचार पद्धति—यसमा कथा, गीत, र साझा विश्वासमार्फत आत्मा क्रियाशील बनाइन्छ।
- समुदायको सहभागिता उपचारको प्रभावकारिताका लागि अत्यावश्यक हुन्छ।

यी उदाहरणहरू केवल परम्पराको दस्तावेजीकरण मात्र होइनन्; यी बहुसांस्कृतिक सन्दर्भमा एकीकृत मानसिक स्वास्थ्य अभ्यासका लागि मूल्यवान पाठहरू हुन्।

